# विदेशी लगानी र एकद्वार नीति, २०४९

## १. भूमिका

विश्वको आर्थिक संरचनामा आएको परिवर्तनको लहरले साना ठूला सबै राष्ट्रहरू प्रभावित भएका छन् । यस परिवर्तन अनुकूल आ-आफ्नो अर्थव्यवस्थालाई समायोजन गर्ने क्रममा छिमेकी मुलुकले पनि खुला र उदार नीति अपनाएर आफ्नो आर्थिक विकास प्रक्रियालाई गतिशिल बनाउन अर्थतन्त्रका विभिन्न क्षेत्रहरूमा समयानुकूल परिवर्तन एवं सुधार गर्नु जरुरी भइसकेको छ । यसै परिप्रेक्ष्यमा विदेशी लगानीले नेपालजस्तो मुलुकको आर्थिक विकासको क्रममा प्रभावकारी भूमिका निर्वाह गर्न सक्ने हुँदा समयसापेक्ष, उदार एवं खुला नीति बनाई विदेशी लगानीलाई आकर्षित गर्न सजग हुने बेला भइसकेको छ । यसको निम्ति जननिर्वाचित सरकार शुरुदेखि नै बचनबद्ध रहेको छ । विदेशी लगानीबाट प्राप्त गर्न खोजिएका उद्देश्य, लगानीको स्वरूप, प्रक्रियागत पक्ष, सुविधा तथा सहुलियत एकद्वार प्रणालीबाट उपलब्ध गराइने छिटोछरितो प्रक्रियात्मक र संस्थागत सेवा जस्ता पक्षहरू स्पष्ट गरी विदेशी लगानीको माध्यमबाट राष्ट्र लाभान्वित हुन सक्ने अवधारणा लिएर यो नयाँ नीति प्रस्तुत गरिएको छ । यसको कार्यान्वयनबाट पूँजी, आधुनिक प्रविधि, व्यवस्थापन र प्राविधिक सीप, अन्तर्राष्ट्रिय बजारमा पहुँच, प्रतिस्पर्धामूलक व्यावसायिक धारणाको विकास, उत्पादकत्व अभिवृद्धिप्रति जागरुकता जस्ता व्यावसायिक गुणहरू राष्ट्रमा भित्रिन गई विशेष गरी निजी क्षेत्रमा औद्योगिक संस्कृतिको विकास हुन सघाउ पुग्न जाने विश्वास गरिएको छ ।

## २. उद्देश्य

२.१ आय तथा रोजगारीको थप अवसरहरू सिर्जना हुनेगरी उत्पादनशीलता क्रियाकलाप विस्तार गरेर अर्थव्यवस्थालाई सबल र गतिशील बनाउने ।

२.२ औद्योगिकरण प्रक्रियामा निजी क्षेत्रको सहभागिता बढाउने ।

२.३ विदेशी पूँजी, आधुनिक प्रविधि, व्यवस्थापन र प्राविधिक सीप भित्र्याई आन्तरिक स्रोत र साधनलाई उत्पादशील क्षेत्रमा परिचालन गरेर उत्पादकत्व बढाउने ।

२.४ अन्तर्राष्ट्रिय बजारमा देशको प्रतिस्पर्धात्मक क्षमता बढाउने ।

## ३. विदेशी लगानीको स्वरूप

३.१ विदेशी लगानी अन्तर्गत विदेशी लगानीकर्ताले विदेशी मुद्रा वा पूँजीगत सम्पत्तिको रूपमा गरेको शेयर लगानी तथा आर्जित रकमको पुनः लगानी,

३.२ विदेशी मुद्रा वा पूँजीगत सम्पत्तिको रूपमा प्राप्त गरेको ऋण,

३.३ विदेशी उत्पत्तिको कुनै प्रविधिसम्बन्धी अधिकार, विशिष्ठता, फर्मुला प्रक्रिया, पेटेण्टको उपयोग,

३.४ विदेशी स्वामित्वको ट्रेडमार्क, गुडविलको उपयोग,

३.५ वैदेशिक प्राविधिक सेवा, सल्लाहकार सेवा, व्यवस्थापन सेवा र बजार सेवाको उपयोग ।

## ४. विदेशी लगानी अन्तर्गत स्थापना हुने उद्योगहरूका लागि अनुमति

४.१ अनुसूची (१) मा तोकिएका उद्योगहरूमा विदेशी लगानीको अनुमति दिइने छैन अन्य उद्योगमा विदेशी लगानी गर्न अनुमति लिनु पर्नेछ ।

४.२ ठूला र मझौला उद्योगहरूमा मात्र शतप्रतिशतसम्म विदेशी लगानी अनुमति दिइनेछ । घरेलु तथा साना उद्योगहरूमा प्रविधि हस्तान्तरणको अनुमति दिइनेछ ।

## ५. रकम फिर्ता लैजाने व्यवस्था

परिवर्त्य मुद्रामा लगानी गर्ने अनुमति पाएका विदेशी लगानीकर्ताले निम्नबमोजिमको रकम बजार विनिमय दरमा सदही गरी परिवर्त्य मुद्रामा नेपालबाहिर लैजान पाउनेछ :-

५.१ विदेशी लगानीको केही वा सबै भागको शेयर बिक्रीबाट प्राप्त रकम,

५.२ विनेशी लगानी बापतको लाभ र लाभांशको रूपमा प्राप्त रकम,

५.३ विदेशी ऋणको साँवा र ब्याजको भुक्तानीको रूपमा प्राप्त रकम,

५.४ प्रविधि हस्तान्तरण सम्झौता अन्तर्गत प्राप्त रकम,

५.५ कुनै सम्पत्ति अधिग्रहण गरिएबापत क्षतिपूर्तिका रूपमा प्राप्त रकम,

५.६ स्वीकृत प्राप्त गरी नेपाली उद्योगमा कार्यरत परिवर्त्य विदेशी मुद्रा प्रचलनमा भएको मुलुकको विशेषज्ञले तलव, भत्ता आदि बापत प्राप्त गरेको रकमको बढीमा ७५ प्रतिशतसम्म परिवर्त्य विदेशी मुद्रामा फिर्ता लैजान पाउनेछ ।

६. **सुविधा तथा सहुलियत**

६.१ विदेशी लगानीमा स्थापना भएका उद्योगलाई औद्योगिक व्यवसाय ऐनले प्रदान गरेको सुविधा एवं सहुलियतका अतिरिक्त देहायबमोजिमको सुविधा प्रदान गरिनेछ-

६.१.१ विदेशी ऋणमा आर्जित ब्याजमा १५ प्रतिशत आयकर लगाइनेछ।

६.१.२ रोयल्टी, प्राविधिक एवं व्यवस्थापन शुल्कमा १५ प्रतिशत आयकर लगाइनेछ।

६.१.३ निकासीबाट आर्जन गरेको आयमा आयकर लगाइने छैन।

६.१.४ आयकर लगायत अन्य सुविधा एवं सहुलियतका हकमा विदेशी लगानीमा स्थापित उद्योगहरूलाई पनि औद्योगिक व्यवसाय ऐन अन्तर्गत विदेशी लगानीमा स्थापना गरिएका उद्योगहरूलाई प्रदान गरिए बमोजिम सहुलियत प्रदान गरिनेछ।

७. **अन्य सुविधा**

७.१ विद्युत सुविधा वितरणमा उद्योगलाई प्राथमिकता दिइनेछ। आफ्ना उपयोगका लागि उद्योगले विद्युतशक्ति उत्पादन गरेमा कुनै शुल्क लाग्ने छैन।

७.२ दोहोरो करबाट मुक्त : विदेशी लगानीलाई दोहोरो करबाट बचाउन विदेशी लगानीकर्ताको मुलुकसँग दोहोरो कर नलाग्ने गरी सम्झौता गर्न श्री ५ को सरकारले आवश्यक कारबाही चलाउनेछ।

७.३ निकासीमुलक उद्योगले आफ्नो उत्पादनका लागि प्रयोगमा ल्याएको कच्चा पदार्थ, सहायक कच्च पदार्थ आदिमा तिरेको भन्सार, बिक्रीकर तथा अन्तःशुल्क आदि निकासी गरेको परिमाणको आधारमा फिर्ता दिइनेछ। त्यसरी फिर्ता हुने राजश्व फिर्ताका लागि आवेदन गरेको ६० दिनभित्र निकासीकर्तालाई फिर्ता दिइनेछ।

७.४ आफ्नो उत्पादनको ९० प्रतिशत वा सो भन्दा बढी निकासी गर्ने उद्योगलाई निर्यात प्रशोधन क्षेत्रमा स्थापित उद्योगले पाउने सुविधाहरू उपलब्ध गराइनेछ। बण्डेड वेयर हाउससम्बन्धी सुविधालाई पनि कायमै राखिनेछ।

७.५ कुनै उद्योगले आफ्नो उत्पादन देशभित्रै परिवर्त्य विदेशी मुद्रामा बिक्री गरेमा त्यस्तो उत्पादनमा लागेको अन्तःशुल्क, बिक्रीकर तथा त्यस्तो उत्पादनमा प्रयोग भएको कच्चा पदार्थमा लागेको भन्सार महसुल, अन्तःशुल्क र बिक्रीकर फिर्ता

दिइनेछ । यसरी फिर्ता पाउनु पर्ने राजश्व फिर्ता पाउन आवेदन गरेको ६० दिनभित्र फिर्ता दिइनेछ ।

७.६ निर्यात हुने औद्योगिक वस्तुमा प्रयोग गरिने माध्यमिक वस्तु (Intermediate goods) उत्पादन गर्ने उद्योगलाई उत्पादन सामग्रीमा लागेको भन्सार महसुल, बिक्रीकर तथा अन्तःशुल्क र उत्पादनमा लागेको बिक्रीकर आदि निर्यात भएको परिमाणमा निकासीकर्तालाई निजले पाउन आवेदन गरेको ६० दिनभित्र फिर्ता दिइनेछ ।

७.७ सरकारी एवं औद्योगिक क्षेत्रभित्रका जग्गा उद्योगलाई उद्योग सञ्चालन गर्न प्राथमिकता दिइनेछ ।

७.८ उद्योगको आफ्नो उत्पादनको मूल्य निर्धारणमा हस्तक्षेप गरिने छैन ।

७.९ निर्यात प्रवर्द्धन क्षेत्रमा स्थापना गरिएका उद्योगहरूले प्रयोग गर्ने मेसिन औजार एवं कच्चा पदार्थ तथा निकासी हुने उत्पादनमा कुनै प्रकारको कर लगाइने छैन ।

## ८. भिसाको व्यवस्था

८.१ विदेशी लगानीमा स्थापित उद्योगमा विदेशी लगानीकर्ताको लगानी रहेको अवधिभरका लागि विदेशी लगानीकर्ता वा अधिकृत प्रतिनिधि र निजको आश्रित परिवारलाई नेपालमा बस्न गैर पर्यटक भिसा दिइनेछ ।

८.२ नेपालमा लगानी गर्ने उद्देश्यले अध्ययन एवं अनुसन्धानको सिलसिलामा नेपाल आएका विदेशी लगानीकर्तालाई ६ महिनासम्मको गैरपर्यटक भिसा दिइनेछ ।

८.३ कुनै विदेशी लगानीकर्ताले एकैपटक यु.एस.डलर दुई लाखभन्दा बढी परिवर्त्य विदेशी मुद्रा लगानी गरी उद्योग स्थापना गरेमा विदेशी लगानीकर्ता तथा निजको आश्रित परिवारका लागि उद्योगमा लगानी रहेसम्म स्थायी आवासीय भिसा उपलब्ध गराइनेछ ।

## ९. राष्ट्रियकरण नगरिने

कुनै पनि उद्योगको राष्ट्रियकरण गरिने छैन ।

## १०. मध्यस्थता

१०.१ विदेशी लगानी सम्बन्धमा उठेको कुनै विवाद विदेशी लगानीकर्ता, सम्बन्धित उद्योग र उद्योग विभागले आपसमा समाधान गर्न नसकेमा मध्यस्थताद्वारा समाधान गरिनेछ ।

१०.२ मध्यस्थताका लागि अन्तर्राष्ट्रिय व्यापार कानुनसम्बन्धी संयुक्त राष्ट्र संघीय आयोग (United Nations Commission for International Trade Law) को मध्यस्थता नियमबमोमि मध्यस्थता गरिनेछ ।

१०.३ मध्यस्थताको स्थल काठमाडौं हुनेछ ।

## ११. एकद्वार प्रणाली सम्बन्धी व्यवस्था

विदेशी लगानी एकद्वार प्रणालीबाट सेवा उपलब्ध गराउन देहाय बमोजिमको व्यवस्था मिलाइनेछ :-

११.१ अनुमति र दर्ता

११.१.१ विदेशी लगानी एवं प्रविधि अन्तर्गत स्थापना हुने उद्योगहरूको अनुमति, सुविधा र अन्य प्रशासनिक सेवाहरू विभिन्न निकायका बीच समन्वय कायम गरी छिटोछरितो तवरले उपलब्ध गराउन औद्योगिक व्यवसाय ऐनमा व्यवस्था भएको औद्योगिक प्रवर्द्धन बोर्डलाई केन्द्रबिन्दु बनाई उद्योग विभागलाई एकद्वार सेवा प्रदान गर्ने निकायको रूपमा संगठित गरिनेछ ।

११.१.२ विदेशी लगानीमा स्थापना हुने उद्योगहरूको स्थापनाका लागि दर्ता, जग्गा, विद्युत, पानी आदि पूर्वाधार सेवाको उपलब्धि तथा कर सम्बन्धी अन्य सुविधाहरू एकैथलोबाट उपलब्ध गराउन निम्नानुसारको एकद्वार समिति गठन गरिनेछ :-

**एकद्वार समिति**

| | | |
|---|---|---|
| १. | महानिर्देशक, उद्योग विभाग | - संयोजक |
| २. | सहसचिव, उद्योग मन्त्रालय | - सदस्य |
| ३. | सहसचिव, अर्थ मन्त्रालय | - सदस्य |
| ४. | सहसचिव, वाणिज्य मन्त्रालय | - सदस्य |

५. मुख्य नियन्त्रक, नेपाल राष्ट्र बैंक - सदस्य

११.१.३ विदेशी लगानी तथा प्रविधि हस्तान्तरणका लागि उद्योग विभागमा आवेदन प्राप्त भएको बढीमा ३० दिनभित्र बोर्डको निर्णयनुसार उद्योग विभागले अनुमति दिने वा नदिने जानकारी गराउनेछ ।

११.१.४ विदेशी लगानी अनुमति प्रदान गर्दा पाउने सुविधा सहुलियतहरू अनुमति पत्रमा तोकिनेछ ।

११.१.५ विदेशी लगानीको अनुमति प्राप्त भएको ३५ दिनभित्र उद्योग दर्ताका लागि उद्योग विभागमा निवेदन दिनुपर्नेछ । अनुमति प्राप्त उद्योगको दर्ताका लागि निवेदन प्राप्त भएको २ दिनभित्र दर्ता गरिनेछ ।

११.२ संस्थागत व्यवस्था

११.२.१ विदेशी लगानी प्रवर्द्धन, इजाजत, अनुमति, सुविधा तथा प्रशासनिक कार्यहरू एकद्वार प्रणालीबाट सम्पन्न गर्न उद्योग विभागको सुधार र संगठनात्मक विस्तार गरिनेछ । यस विभागको स्तरोन्नति गराई अतिरिक्त सचिव स्तरको महानिर्देशकको व्यवस्था गरिनेछ ।

११.२.२ अर्थ मन्त्रालय र यस अन्तर्गतका विभागहरू, वाणिज्य विभाग, नेपाल राष्ट्र बैंक, अध्यागमन विभाग जस्ता निकायहरूले उपलब्ध गराउने विभिन्न सुविधाहरू एवं सेवासम्बन्धी अधिकार एकद्वार समितिले उपयोग गर्ने गरी प्रत्यायोजन गरिनेछ ।

११.३ अन्य व्यवस्था

यस नीतिले उपलब्ध गराउने भनेको अवधि किटिएको सुविधाहरू नीतिमा परिवर्तन भए तापनि यस नीति अन्तर्गत स्थापित उद्योगलाई यसै नीतिअनुरूप सुविधाको प्रत्याभूति दिइनेछ ।

**विदेशी लगानीका लागि अनुमति प्रदान गरिने उद्योगहरू**

१. हातहतियार, खरखजाना उत्पादन गर्ने रक्षासम्बन्धी उद्योगहरू

२. चुरोट, बिँडी

३. मदिरा (शतप्रतिशत निकासी गर्ने बाहेक)